# नेपाल को इतिहास

## अर्थात् दिग्दर्शन

लेखकः—रामजी उपाध्याय ।

# समर्पण

"त्वदीयं वस्तु गोविन्द तुभ्यमेव समर्पणम्।"

श्री ५ महाराजाधिराज,

स्वस्तिश्री श्रीगिरिराज चक्र चूडामणि सदा समर विजयी

ऐतिहासिक नेता स्वरूप देशका

अधीश्वर

महाराणा त्रिभुवन वीरविक्रम शाह देव शमशेरजंग

का

बाहुलीमा, आफ्ना ऐतिहासिक वीरपुंगवहरूको विमल गाथा,

देशका उत्थानकालका स्वर्ण-युगको र वर्तमान

शोषित देशका पतनको र पतनका कारणको

वास्तविक वर्णन गरिएको यो

नेपालको इतिहास

समर्पित छ.

प्रभू,

आफ्ना वंश-प्रवर्तक रघु पछि भगवान् रामचन्द्रका विमल
आदर्श-चरित्र, कष्ट-सहिष्णुता वीरश्रेष्ठ कार्यको र आफ्ना
पूर्वपुरुष बप्पारावल जस्ले पगलेको शीशालाई पचाई
शिशौदिया नाम चलाए, राणा हमीर जसले आफ्नो
गइसकेको राज्यको एक्लै निरस्त्र भएर पनि केवल
भिल्लहरूका सहायताले उद्धार गरे, राणाप्रताप
जसले आफ्ना साहसका भरले अगाध शक्ति
सम्पन्न मोगल सम्राट्लाई तुरकका
ठाऊँमा राजा सम्म भनेनन् र
प्रातःस्मरणीय राजा पृथ्वीनारायणशाह र राजा रणबहादुरशाह
जसले नगण्य आबादीको गोर्खाराज्यका आफ्ना मुठीभरीका
मानिसका भरले नेपाल साम्राज्य खड़ा गराएको आदर्शा-
नुरूप महान् साहस पूर्वक नीचाशय नमकहराम भृत्य-
हरूका विघटन र नेपालका पुनरोद्धार लाई
उठाएको कदमले सर्कार को जन्म सार्थक र
सफल भई, सर्कार पनि आफ्ना ऐतिहासिक
महापुरुष हरू तुल्य प्रातःस्मरणीय रूपले
सदाका निमित्त देशमा स्मरणीय होइ-
बक्सिएको छ.

देश र दुनियाँ सर्कारका साथ छ.

# भूमिका

इतिहासको विषय अत्यन्त गहन तथा महान् छ। त्यसमा कुनै विद्वान् सज्जनले कलम उठाउने स्थानमा म जस्तो अशिक्षितले कलम उठाउनु हास्यास्पद हो ता पनि समयको मागले मैले आफ्नो चंचल चित्तलाई रोक्न सकिन। आफ्ना त्यस चांचल्यता-वश आफ्ना घरको वंशावलि र पितामह स्वर्गीय सुब्बाहोमनाथ उपाध्यायले लेखेका "वर्तमान नेपालेर इतिवृत्त" बाट प्रेरणा पाई यो पुस्तकलाई लेख्ने प्रयास गरेको हूँ। कवि कुलगुरु कालीदासका शब्दमा "सूत्रस्ये वास्ति मे गतिः" झैं मैले पार्वत्य वंशावली र अनेक देशी विदेशी विद्वान्हरूले लेखेका इतिहास हरू बाट उधृत गरेको लेखहरू लाई एक सूत्रमा गाँथी यो इतिहासरूपी माला तयार गरेको हूँ। यसमा मैले नेपालका अनेक वृद्ध, पुराना भारदारहरूका मुखबाट सुनेका कुरा हरूको पनि संग्रह गरेको छ। मेरा अल्पज्ञतामा दृष्टि न दिई देश भाई हरूले यस पुस्तिका बाट यत्किंचित् पनि लाभ वा आत्मतुष्टि उठाउन वा प्राप्त गर्न पाउनु भयो भने म आफ्नो परिश्रम लाई सफल सम्झनेछु। मैले यो ग्रन्थ लेख्दा राइट, प्रिंसेप, डिग्वे, भ्यांसीटाट, विलियम, कनिंघम, मिल्स, पर्सिवल, फ्रांसीस हैमिल्टन, डा० भगवानलाल इन्द्रजी, जायसवाल, वेंडल, डाक्टर सुन्दरलाल, वीरवर सावरकर, सूर्यविक्रम ज्ञवाली, पं० बलदेव मिश्र, पं० नारायण पाण्डे

पं० अम्बिकाप्रसाद उपाध्याय आदि विद्वान् सज्जनहरूका इतिहासग्रन्थ बाट घटना संग्रह गरेको ले म वहाँहरूको बडो आभारी छु । मलाई मौखिक घटना हरू बताउने सज्जनहरू लाई पनि म सहर्ष धन्यवाद दिन्छु ।

यसमा अनेक घटनावलि छुट्न पनि सक्तछन् । त्यस विषयमा विज्ञ सज्जनहरूले प्रकाश दिई सप्रमाण लेखि पठाउनु भयो भने त्यस्लाई सहर्ष स्वीकार गरी अर्को संस्करणमा उचित स्थान दिनेछु ।

यो ग्रन्थ अत्यन्त हडबडीले छपेको र यस्मा भएका तस्वीर-हरू को ब्लाक चाँडो तयार गर्नका निमित्त स्वयं मैले नै दौड-धूप गर्नु पर्दा प्रूफ करेक्सन लाई समय न पाएको र हिन्दी का कम्पोजिटरहरूले नेपाली भाषा कम्पोज गर्न न जानेको ले यस पुस्तकमा वेठेगान अशुद्धी हरू रहेका छन् । तसर्थ पाठक हरूमा मेरो करबद्ध प्रार्थना छ कि मेरो यो ठूलो अपराध वहाँ हरूले क्षमा गर्नु होला । अर्को संस्करणमा ती अशुद्धि हरू अवश्य संच्याइने छन् ।

आफ्ना स्वामी हरुको विमल विजय श्री युक्त कीर्ति कलाप ।
लेखी नेपालवासी हरू सब जनमा गर्दछू यो प्रकाश ॥
कल्लेरीग्राम स्वामी, द्विज, प्रभु-कुलका भक्त प्रख्यात नाऊँ ।
सुब्बा श्रीहोमनाथात्मज तनय म श्री रामजी नाउँको हूँ ॥

नन्दन साहुको गली
काशी ।

विनीतः—
रामजी उपाध्याय

# विषयानुक्रमणिका।



नेपाल संगठायिता श्री ५ राजा पृथ्वीनारायण शाह
(१७४०-१७७४) (५)



वर्तमान महाराजाधिराज
स्वस्ति श्रीगिरिराजचक्र चूड़ामणि नरनारायणेत्यादि
विविध विरुदावलि विराजमान
मानोन्नत—श्री ५ महाराजाधिराज
His Majesty the King त्रिभुवन वीर विक्रम शाह
देव सम्शेर जङ्ग सदा समर विजयीनाम्। (१)




ROYAL ARMS OF NEPAL

नेपालको राजमोहर

महाराजाधिराज श्री ५ त्रिभुवन वीर विक्रम शाह
को हस्ताक्षरको प्रतिलिपि (२)





जंगबहादुरका पहिलेको र पछिको नेपालका
प्रधानमंत्रीहरूको तीनचाँदे पगरी



श्री ५ राजा राजेन्द्र वीर विक्रमशाह
(१८१६-१८४७) (६)



सन् १८४६ को कोतपर्व कारिणी महाराज्ञी श्री ५
राज्यलक्ष्मी देवी (७)



श्री ५ राजा सुरेन्द्रवीर विक्रमशाह ( १८४७-१८८१ ) (८)



श्री ५ वलिअहद महाराज त्रैलोक्यबीरविक्रमशाह (९)



श्रीं ५ राजा पृथ्वीवीर विक्रमशाह (१८८१-१९११) (१०)



सिंहासनासीन श्री ५ महाराजाधिराज त्रिभुवनवीर विक्रमशाह (जन्म ३० जुन १९०६ राज्यग्रहण १९११) (११)



श्री ५ राजा पृथ्वीवीर विक्रमशाह (१८८१-१९११) (१०)



श्री ५ महाराजाधिराज, युवराजधिराज र भारतका प्रधानमंत्री पं० जवाहरलाल नेहरूका साथ दिल्लीमा (१३)



श्री ५ महाराजाधिराज र
भारतका प्रधान मंत्री जवाहर लाल नेहरु
काठमान्डु मा



सिंहासनारूढ अवस्था का वखतका श्री ५ राजा पृथ्वीवीर विक्रमशाह



सिंहासनारूढ अवस्था का वखतका श्री ५ राजा त्रिभुवन वीरविक्रमशाह



नेपाल का सिंहासनासीन गराइएका श्री ५ शाहजादा ज्ञानेन्द्रवीर विक्रमशाह



आफ्रा वंश प्रवर्तक जंगवहादुर पछि रणोद्दीप, वीरशम्सेर, चन्द्र शम्सेर ले शिशु वालख राजा पाई चलाएको स्वयंभू ठिकेदारी-को पुनरावृत्ति गर्न खोज्ने मोहनशम्सेरले गराएको नाटकीय शिशु शाहजादा ले

# नेपाल-दिग्दर्शन

## अर्थात् इतिहास

### भौगोलिक ।

वर्तमान नेपाल राज्य पृथिवीको मानचित्रका पूर्वी गोलार्द्धका अन्तर्गत एशिया महाद्वीपमा हिमालयका कोखामा भारतका उत्तर तिर शिरोमुकुटझैं बसेको छ ।

यसको दक्षिणी सीमा भारतवर्षको संयुक्त प्रदेश विहार, बंगाल, पूर्वी सीमा सिक्किमराज्य वा फलेलूं पर्वत, उत्तरी सीमा सुविस्तृत हिमालय पर्वत तिव्बत, (भोट प्रदेश) तथा पश्चिमी सीमा कुमाऊँ, रुहेलखण्ड वा महाकाली ( सरयू ) नदी हुन् । यद्यपि सन् १८१६ सम्म यस राज्यको सीमा सहारनपुर कुमाऊँ गरी सतद्रु नदीका किनार सम्म फैलिएको थियो, तर अंग्रेज–समर पछि सन् १८१६ इश्वीको सुगौलीको संधि भए देखि ती सबमा अंग्रेजहरूको अधिकार भएको हुनाले अब त्यो भारतीयसंघका आधीनमा छ ।

यस राज्यको वर्तमान विस्तार पूर्व पश्चिम लामो र उत्तर दक्षिण चौडा छ । यसको सब भन्दा ज्यास्ति लंबाई मोरङ् जिल्लाका धुलावारीबजार देखि डोटी जिल्लाका दार्चुला गाउँ सम्म पुग न पुग ३०० कोशको र सबै भन्दा ज्यास्ति चौडाई, इलाका मुस्ताङ् देखि पाल्ही जिल्ला भगवानपुर सम्म अन्दाजी ७० कोशको छ । अरू ठाउँमा यतिको लंबाई चौडाई छैन । यसको पूर्व पश्चिमको सरदर लंबाई प्रायः २७० कोश, उत्तर दक्षिणको चौडाई ५० कोश

सम्मको भई आन्ना २६ऽ२५ देखि ३०। १७। ७: प्राधि ८८० देखि ८८०१४। पू: भूमिको परिमाण ५४००० वर्ग मीलको छ।

यस राज्यको भूभाग पूर्वी उत्तरी तथा पश्चिमी पर्वतमय तथा दक्षिणी भूभाग समथल छ। समथल भागलाई तराई भन्दछन्। नेपालको जन संख्या सन् १९१० मा भएको नेपाल सरकारको जन गणनाले ५५७३७९१ र सन १९२० को जनगणनाले ५५७४७५६ मानिन्छ. तर यो भ्रामक हो। नेपालमा अद्यावधि जनगणनाको कुनै प्रबंध समितीनै बनेको छैन। तसर्थ अन्दाजी नेपालको जन संख्या पुग नपुग ६५०००० को नै छ।

नेपाल समस्त भारतको पुण्यभूमि हो। यहाँको प्राकृतिक दृश्य मनोरम—मनोहर तथा आश्चर्यमय छ। हिमालयमा नेपालका दरीबाट हिमश्रेणिको जो अद्भुत छटा देखिन्छ, त्यो ता विस्तार र विभवमा अद्वितीय नै छ। यस तुषारमंडित शुभ्रकाय भूभागका जता तिर दृष्टि दियो उतै तिर कुसुम सेवित विविध फलका भारले नुहेका तरुश्रेणि मात्र देखिन्छन्। यहाँ नाना किसिमका विहंगम हरूले निनादित मकरन्द वासित कानन र उपकाननहरूको ठेगानै छैन। जतातते कल निनादिनी निर्झरी झरी प्राणी मात्रको मनलाई आल्हादित गराउछ।

यी समस्त दृश्य नेत्रानन्दका साथ हृदयमा कोमल भावको उत्पत्ति गर्दछ। अतिशय विस्तृत साखु, उत्तालसाल, देवदारू, गिरी तथा उपगिरीहरूको दर्शन गरी अन्तस्करणमा एउटा अत्युन्नत गम्भीर भक्तिको अलौकिक भाव आविर्भूत भई अति क्षुद्र मनलाई समेत विष्फारित तथा शक्ति सम्पन्न तुल्याउछ। नेपालमा प्रकृति देवी आफ्ना अलौकिक मूर्तिले सदा उन्मत्तावत् उमंग भावले नृत्य गर्दछिन। त्यसको लोकातीत उन्नतभाव सहसा दर्शकहरूका हृद-यमा प्रवेश गरी अवसन्नता, कार्पण्यता, दीनता प्रभृति समस्त

जड़भावलाई छुटाई हृदय पनि त्यही रीतले उन्मत्त भई नाच्न लाग्दछ । समस्त संसारको सुन्दरताको केन्द्र स्थान नेपाल कवि र जिज्ञासु विज्ञानान्वेषीहरूको मन आफ्ना तरफ आकृष्ट गर्नलाई यथेष्ट छ ।

यहाँका ऋतुहरू पनि मोहक तथा स्वास्थकर हुन्छन् । शरद्-कालमा स्वच्छ तथा ठिहिर्याउने वायु चल्दछ तथा प्रातःकालमा तुषारो परेको देखिन्छ । रात्रीमा चउरमा थर्मामिटर राखेमा २० डिग्री सम्म ओर्लन्छ । ग्रीष्मकालमा विशेष गर्मी हुँदैन । यहाँका गर्मीको डिग्री ६० अंतिम हो । यहाँ वर्षा ६० इञ्च सम्म हुन्छ ।

—०—

## प्राकृतिक विभाग पर्वत र पहाड़हरू

उत्तरमा –

नेपालका उत्तर भागमा हिमालय पर्वत छ । यो पर्वत संसार-का सबै पर्वतहरू भन्दा अग्लो छ । यसका अनेक हाँगाहरू दक्षिण तिर फैलएकाछन । तिनका नाम–कुम्भकर्ण, महालंगूर, थासे, इत्यादि ठाऊ ठाऊमा बेग्ला बेग्लै रहेका छन् ।

हिमालय पर्वतका अनेक अग्ला अग्ला टाकुराहरू छन् । तल लेखिएका टाकुराहरू ऊचाईमा समुद्रका सतह देखि २०।२० हजार फुट भन्दा पनि अग्ला छन् ।

( १ ) कंचन जंघा–पल्लो किराँतको उत्तर पूर्व भागमा कुंभ-कर्ण हिमालयमा सीमाने नर २८१४६ फुट अग्लो छ ।

( २ ) मकालु–पल्लो किराँतका उत्तर पश्चिम भागमा कुम्भ-कर्ण हिमालयमा २७७६० फूट अग्लो छ ।

( ३ ) एभरेष्ट–पूर्व ३ नम्बर इलाकाको उत्तर भागमा, महालंगूर हिमालयमा सामानैमा २९००२ फुट अग्लो छ ।

( ४ ) गौरीशंकर—पूर्व नं० २ इलाकाको उत्तर भागमा, रोल्वालिङ् हिमालयमा सीमानैमा २३४५७ फूट अग्लो छ ।

( ५ ) लामटाङ्—पश्चिम नं० १ इलाकाका उत्तर भागमा नुवाकोट जिल्लाको लामटाङ् हिमालयमा २३७३१ फूट अग्लो छ।

( ६ ) धौलागिरी—पर्वतजिल्लामा धौलागिरी हिमालयमा २६८१० फूट अग्लो छ ।

( ७ ) गोशाइँथान—पश्चिम नं० १ को उत्तर लामलाङ् हिमालयमा २६२६१ फूट अग्लो छ ।

हिमालयका दक्षिण पट्टी–

१—महाभारत नामको पर्वत प्रायः हिमालय कै हाराहारी मेची देखि महाकाली ( शारदा नदी ) सम्म फैलिएकोछ ।

२—महाभारतका दक्षिण पट्टी चुरे नामको होचो पहाड़ कोसी देखि महाकाली [ शारदा ] सम्म फैलिएको छ ।

पूर्वमा—

१—नगर कोटको पहाड़ ।

२—कालिञ्चोकको पहाड़—यो चरीकोट बाट ३ कोस उत्तर डाँडाँको टिप्पामा छ । यहाँ जलमग्न देवीको रमणीय स्थान छ ।

पश्चिम मा—

१—नागार्जुन [ २ ] भीम फट्के [ ३ ] शशीलेक ( ४ ) स्वर्गद्वारीको लेकहरू छन् ।

—०—

## घाटी हरू

हिमालयका टाकुराहरू सदा हिउँले ढाकिएर रहेका हुन्छन् । हिउँदमा फेदी सम्म हिउँ पर्दछ । त्यस बखत पर्वतलाई नाघ्न असाध्य हुन्छ । बर्षामा फेदीतिरको हिउँ पग्लन्छ । त्यस बखत-

मा नदी नालाहरूले छेडी बनाएका घाटीहरूबाट हिमालय पार गरी भोट प्रदेश तिर मानिसहरू जावत आवत गर्दछन् ।

१—टिपताला—१६७४० पल्लोकिरात, ओताङ्चुंगका उत्तर कुंभकर्ण हिमालय छ ।

२—पोपतिया—१३६३३ पल्लोकिरात हटिया उत्तर कुंभकर्ण हिमायलमा छ ।

३—बाँगवा—१६०६५ पूर्व नं० ३ इलाका दूधकोसीका तीर, महालंगूर हिमालय छ ।

४—कलाकलामटाङ्—पूर्व नं० २ इलाका तामाकोसीको तीर, चगरका उत्तर, रोल्वालिङ् हिमालयमा छ ।

५—कर्बि ध्याकु—२१५५४ पूर्व नं० १ पहाड़ इलाका जुगल हिमालयमा छ, यहाँ बाट कुती उत्रिन्छ ।

६—रसूवा—६००० पश्चिम नं० १ इलाका [ नुवाकोट ] बुढोगण्डकीका तीर, लामटाङ् हिमालयमा छ । यहाँ बाट केरुङ् उत्रिन्छ ।

७—साल्पु—१६५३७ पश्चिम नं० १ इलाका [ सल्ल्यान ] बुढीगण्डकी र स्यालखोलाका तीर, थाप्ले हिमालयमा छ ।

८—लार्वो—१७१०२ पश्चिम नं० २ इलाका [ गोरखा ] लार्के हिमालयमा छ ।

९—मुस्ताङ्—पर्वत जिल्ला मुस्ताङ् हिमालयमा, काली—गण्डकीको तीरमा छ ।

१०—नाम्जा—१०२२० जुम्जा जिल्ला टाकेखोलाको तीर, छाङ्ला हिमालयमा छ ।

११—नालवंकर—जुम्ला जिल्ला हुमला नेर ताख हिमालयमा छ ।

१२—व्यास—डोटी जिल्ला, महाकाली नदीका तीर व्यास हिमालयमा छ ।

# नदी हरू

नेपालमा मुख्य ३ नदीहरू छन। पूर्व भागमा कोसी, मध्य भागमा गण्डकी र पश्चिमभागमा कर्नाली पर्दछ। ई तीनै नदी हिमालय पारी भोटबाट आएर भारतवर्षमा गई गंगा नदीमा मिल्दछन्। यिनीहरूका मुख्य सहायक नदीहरू केही हिमालय पर बाट आएका छन्। केही हिमालयका दक्षिण पाखाबाट आएका छन्। तीन मुख्य ई हुन्।

—०—

## कोसी

| नदी, | मूल, | मुख्यनदी वा सहायक, | अर्कोनदीसितमिल्नेठाऊ |
|---|---|---|---|
| तामाकोसी | भोटमा | सुनकोसीको सहायक | घुमाउने चैनपुर नेर |
| लिखु | महालंगूर हिमालयमा | ऐ० | संगनास घाटीनेर |
| दूधकोसी | ऐ० | ऐ० | जयरामघाटनेर |
| सुनकोसी | भोटमा | अरुणको सहायक | दानकेरा |
| इन्द्रावती | जुगल हिमालयमा | सुनकोसीको सहायक | दुलालघाट |
| अरुण | ऐ० | कोसीको मुख्यनदी | गंगामा |
| तमोर | कुंभकर्ण हिमालयमो, | अरुणको सहायक | दानकेरा |

## गण्डकी

| नदी, | मूल | मुख्यनदी वा सहायक | अर्को नदीसित मिल्नेठाऊँ |
|---|---|---|---|

| | | | |
|---|---|---|---|
| सेती | अन्नपूर्णा हिमालयमा | त्रिशूलीको सहायक | कात्राङ् नेर |
| मादी | पेगो हिमालयमा | सेतीको सहायक | दमौलीघाट |
| कालीगण्डकी | मुस्ताङ् हिमालयमा | त्रिशूलीको सहायक | त्रिवेणीघाट |
| मर्स्याङ्दी | ऐ० | ऐ० | ऐ० |
| बुढी गण्डकी | लार्के हिमालय | ऐ० | कल्लेरीनेर |
| त्रिशूली | भोटमा | गण्डकीमा मुख्य नदी | गंगामा |

---

## कर्नाली

| नदी, | मूल, | मुख्यनदी वा सहायक, | अर्कोनदीसितमिल्नेठाउँ |
|---|---|---|---|
| कर्नाली | भोटमा | मुख्य नदी | गंगामा |
| भेरी | कागमागालेक | कर्नालीको सहायक | कुरिन घाट ( दैलेख ) |
| सेती | व्यास हिमालयमा | ऐ० | बर्लेठागाऊं ( आछाम ) |
| महाकाली ( शारदा ) | ऐ० | ऐ० | असबाघाट ( भारत ) |

यी बाहेक उल्लेख गर्न लायकका नदीहरू —

१-बुढीगंगा ( आछाममा ) ( २ ) मादी (पश्चिम ४ नं० मा)

३-रापती ( प्यूठानमा, र ( ४ ) बागमति ( नेपालमा )

## ताल र ठुला ठुला पोखरीहरू

१—टौदह—चोभारको दक्षिण पट्टी ( २ ) कटुवालदह-दक्षिण-काली पूर्वमा

३—कामिनीदह—अमलेखगंजको दक्षिण, पश्चिम ( ४ ) दूध-कुण्ड पूर्व नं० ३ मा

५—गोसाईंकुण्ड पश्चिम नं० १ ( ६ ) फेवाताल नं० ३ पूर्व पोखरी ( ७ ) दिपाङ्ताल, ऐं

८—मेदीताल ऐं ( ९ ) बेगनाताल ऐं ( १० ) रुपालताल गेजन

११–सत्यवतीताल व [पालपामा](१२ गडुवाताल[चितौनमा]
(१३) तमोरघैलाताल. [ऐं मा].

१४–कसरताल [ऐं मा](१५)नन्दनताल [पाल्ही जिल्लामा]
(१६) वाह्रकुने ताल. [दाङ्मा]

१७–स्यापुंताल–[जाजरकोटमा] (१८) बझाङ्ताल[बझाङ्मा]

१९–खयूनरको ताल-[डोटीमा] (२०) रार दह-[जुमलामा]

---

## प्रदेश

पहाडका सिलसिला वमोजीम नेपाल ३ भागमा बाँडिएको छ।

१–मुख्य हिमालयका सिलसिलामा रहेको भाग 'हिमालय' कहिन्छ। त्यस भागमा पहाडै पहाड भएको हुनाले त्यस ठाऊँ लाई पहाडप्रदेशका जिल्लाहरू भन्दछन्।

२–मध्य हिमालयका सिलसिलामा रहेको भाग 'पहाड' कहिन्छ। नेपालको राजधानी काठमाडौं (कान्तिपुर) पहाडप्रदेशमा नै छ। नेपाल राजधानीलाई चारै तिर बाट घेरेर रहेका चारदिशाका शिखरहरूलाई चार भञ्ज्याङ्भन्दछन्। पूर्वमा साँगा भञ्ज्याङ्, दक्षिणमा ताङ्कोट भञ्ज्याङ्, पश्चिममा भेडुङ्गा वा पाँचमाने भञ्ज्याङ्, उत्तरमा पाटीभञ्ज्याङ्हरू ४ भञ्ज्याङ् हुन्। यस चार भञ्ज्याङ् भित्रको जगालाई खास नेपाल भन्ने चलन छ। खास नेपालमा ३ जिल्ला छन्।

काठमाडौं (कान्तिपुर) बागमति नदीको पश्चिम उत्तर किनारमा छ।

पाटन (ललितपुर) काठमाडौंका दक्षिण तर्फमा छ। भादगाऊँ (भक्तपुर) काठमाडौंको पूर्व तर्फमा छ।

खास नेपाल देखि पूर्वमा कोसी प्रदेश छ। यस प्रदेशमा ७

जिल्ला छन्–( १ ) काभ्रेपलाञ्चोक ( २ ) सिन्धुपालचोक ( ३ ) घेलखा ( ४ ) त्रिसंखु ( ५ ) माझकिराँत ( ६ ) पल्लो किराँत (७) इलाम ।

खास नेपाल देखि पश्चिमपट्टी गण्डकी प्रदेश छ । यस प्रदेशमा २६ जिल्ला छन । ( १ ) नुवाकोट ( २ ) लामीडाँडा ( ३ ) मल्यान ( ४ ) धादिङ् ( ५ ) गोर्खा ( ६ ) लंजुङ् ( ७ ) तन्हौं ( ८ ) कास्की ( ९ ) सिरिङ् ( १० ) घिरिङ् ( ११ ) ढोर ( १२ ) पल्लोनुवाकोट ( १३ ) भोर्कोट ( १४ ) सर्नौं ( १५ ) गह्रौं ( १६ ) पय्यु ( १७ ) पर्वत ( १८ ) पाल्पा ( १९ ) गुल्मी ( २० ) गलकोट ( २१ धुरकोट ( २२ ) मुसीकोट ( २३ ) इस्मा ( २४ ) अर्घा ( २५ ) ग्वाँची ( २६ ) प्यूठान ।

गण्डकी प्रदेश देखि पश्चिममा कर्नाली प्रदेश छ । यस प्रदेशमा ६ जिल्ला छन ( १ ) सल्यान ( २ ) दैलेख ( ३ ) दुल्लु ( ४ ) जुमला ( ५ ) अछाम ( ६ ) डोटी ।

३–तल्ला हिमालयका सिलसिलामा रहेको भाग 'मधेस तराई' कहिन्छ । यसका दुइ भाग छन् । ( अ ) 'भित्री मदेश ( आ ) 'मधेस वा तराई' ।

( क ) भित्री मधेसमा जम्मा ९ जिल्ला छन । पूर्वतिर ( १ ) भगवानपुर ( २ ) सिंधुली ( ३ ) उदयपुर माझमा ( ४ ) चित्तौन ( ५ ) नवलपुर पश्चिम तिर ( ६ ) दाङ् ( ७ ) देउखुरी ( ८ ) सुनार ( ९ ) सुर्खेत ।

( ख ) मधेस वा तराईमा जम्मा १५ जिल्ला छनः—पूर्वमा ७ जिल्ला छ (१) पर्सा ( २ ) वारा ( ३ ) रौतहट ( ४ ) सर्लाही ( ५ ) महोत्तरी (६) सप्तरी (७) मोरङ् । बुटौलमा ४ जिल्ला छन् ( ८ ) पाल्ही (९) माझखण्ड (१०) खजहनी (११) शिवराज ।

नयाँ मुलुकमा ४ जिल्ला छन् [१२] बाँके [१३] बर्दिया [१४] कैलाली [१५] कंचनपुर।

खास नेपाल सीमानामा उत्तर–नुवाकोट जिल्ला, पूर्वमा सिन्धुपालचोक र काभ्रेपलाञ्चोक जिल्ला, दक्षिणमा मकवानपुर जिल्ला, पश्चिममा लामीडाँडा र नुवाकोट जिल्ला छ। यहाँको जन संख्या ३०६६०६ छ।

मुख्य शहर – खास नेपालका तीन शहर छन्। [१] काठमाडौं वा कान्तिपुर। यो शहर काठमाडौं जिल्लामा बाघमतिको पश्चिम उत्तर किनारमा छ। नेपाल राज्यको मुख्य राजधानी हुनाले देशको यो मुख्य ठुलो शहर हो। यहाँ नेपालका राजा श्री ५ महाराजाधिराजको नारायहिटी दर्बार, नेपालका प्रधानमंत्रीहरूको सिंहदरबार, उहिलेका राजाहरूका पाला देखिको मुख्य दरबार हनुमानढोका र अरु भाई भारदारहरूका राम्रा राम्रा महल घर स्कूल कालेज इत्यादि छन्। ६० सालका ठुलो भूकम्प पछि नयाँ किसिमका सड़क इत्यादि बनेर यो शहरको शोभा झन् बढ़ेको छ। यहाँको जनसंख्या १०८८०५ छ।

२–पाटन वा ललितपुर, यो शहर पाटन जिल्लामा काठमाडौंका दक्षिण पट्टी छ। पाटन जिल्लाको मुख्य शहर यही हो। खास नेपालको प्राचीन राजधानी यही थियो। यहाँको धातु, काठ, हस्तिहाड आदिको काम प्रशंसनीय छ। यहाँको जन संख्या १०४६२६ छ।

३–भक्तपुर वा भादगाउँ, यो भक्तपुर जिल्लाको मुख्य शहर हो। यहाँको जन संख्या ९३१७३ छ।

नदीहरू बाघमति, कर्मनाशा, प्रभावति [वा नक्खु] ई तीनै नदी काठमाडौंका दक्षिणमा छन। विष्णुमति र भद्रमति (वा भाचाखुसी) काठमाडौंका पश्चिममा छन्। रुद्रमति [धोबी-

खोला] वा मणिमति [मनोहरा] वा हनुमति वा [मनुमन्ते] हनुमति वा [टुकुचा] ई ४ नदी काठमाडौंका पूर्व तिर पर्दछन्।

---

## पूर्व पहाड़का जिल्लाहरू

**पूर्व १ नं० इलाका**—सीमाना—उत्तर भोट, पूर्व दोलखा जिल्ला, दक्षिण सिंधुली जिल्ला र बाघमतिको खाजोर गाउँ, पश्चिम नुवाकोट, काठमाँडौं, भक्तपुर, पाटन जिल्ला।

यस इलाकामा साना साना दुइ जिल्ला छन्। उत्तर भागमा सिन्धुपालचोक जिल्ला छ। त्यहाँका मुख्य बासिन्दा तामाङ्हरू हुन्। दक्षिण भागमा काभ्रेपलाञ्चोक जिल्ला छ, त्यहाँका मुख्य बासिन्दा नेवार हुन्। तर ई दुवै जिल्लामा अरु जातको पनि कमी छैन। यस इलाकामा अन्दाजी १७१००० मानिस छन्।

मुख्य बस्ती—सिन्धुपालचोक तर्फ कोदारी, लिस्ति, तातापानी। यहाँ भन्सार र हुलाकघर छन्।

हमथोक, बाह्रविसे यहाँ एउटा सानो बजार र पाठशाला छ।

तौथली नवलपुर, सिया, पाल्चोक, चौतरा यहाँ पूर्व नं० १ गोस्वारा मूलजंगीपरेठ, सिन्धुपालचोक माल, अदालत, सानु अंग्रेजी दवाखाना, पाठशाला र हुलाक छन्।

फूलपिंग, हेल्मु, काभ्रेपलाञ्चोक तर्फ धूलिखेल—यहाँ छोटो-जंगीपरेठ, काभ्रेपलाञ्चोक माल र अदालत छन्। बनेपा—जिल्ला-को मुख्य बजार यही हो। काभ्रे, संखु, दापचा, पनौती, पाल्चोक।

नदी—इन्द्रावती, मिलोंचे, बलेफा, सुनकोसी इनै सुनकोसीलाई च्याउबासे देखि उत्तर पट्टी भोटेकोसी भन्दछन्। रोसी—

**पूर्व नं० २ इलाका**—सीमाना भोट, पूर्व त्रिसंखु जिल्ला,

दक्षिण सिंधुली जिल्ला, पश्चिम सिन्धुपाल्चोक र काभ्रेपलाञ्चोक जिल्ला।

आबादी—यस इलाकामा दोलखा जिल्ला छ। यहाँका मुख्य बासिन्दा तामाङ र नेवार छन। अरू जातका मानिसहरू पनि प्रशस्त छन्। यहाँको जन संख्या १३३००० छ।

मुख्य बस्ती-दोलखा-यो नेवारहरूको बस्तीको शहर हो। यस बजारमा एक पाठशाला, आयुर्वेदी औषधालय र हुलाक छन्। यसै शहर नेर चरीकोटमा छोटीजंगीपरेठ र अदालत छन्। रामेछापे-गोस्वारा, मूलजंगीपरेठ [ दोलखा ] मालअड्डा र पाठशाला छन्। ल्याङ ल्याङ-चिसापानी ढुँजा, नदी-भोटे-कोसीका उत्तरभागमा सिन्धुपाल्चोक जिल्लाको सीमाना, तामा-कोसी र सुनकोसी दक्षिण भागमा पर्दछ।

**पूर्व नं० ३ इलाका**—सीमाना—उत्तरमा भोट र माउन्ट एभरेष्ट दुग्धकुण्ड, पूर्वमा माझकिरात जिल्ला र साप्सु नदी,दक्षिणमा—सुन-कोसी, उदयपुर जिल्ला, पश्चिममा लिखुनदी, दोलखा जिल्ला।

आबादी—यस इलाकामा चिसंखु जिल्ला छ। यसमा माझ-किराँत र दोलखाको समेत केही भाग गाभिएको छ। मुख्य बासिन्दा किराँती छन्। अरु जातका मानिसहरू पनि प्रशस्त छन्। यहाँको जनसंख्या १०८००० को छ।

मुख्य बस्ती-ओखलढुङ्गा, यहाँ गोस्वाराअड्डा, मूलजंगी परेठ, माल, अदालत, हुलाक र पाठशालाहरू छन्। यी भन्दा बाहेक यहाँ तोपखाना, म्यागजिन, अंग्रेजी दवाखानाहरू पनि छन्। यस जिल्लामा यतातर्फ पर्वतका चुलीहरूमा पुराना भग्ना-वशेष किल्ला गढीहरू पनि पाइन्छन्। एसेलु खर्क, मानेभञ्ज्याङ। नदी—सुनकोशी, दक्षिण भागमा उदयपुरका सीमानामा दूधकोसी पर्दछ।

प्रसिद्ध ठाउँ-यस जिल्लाका उत्तरभागमा महालंगूर हिमालयमा एभरेष्ट भन्ने हिमालयको टाकुरा समुद्रको सतह भन्दा २९००२ फूट अग्लो छ। संसार भरीको सब भन्दा अग्लो टाकुरा यही हो।

**पूर्व नं० ४ इलाका**—सीमाना—उत्तर हिमालय, पूर्व अरुणनदी, दक्षिण कोसीनदी, पश्चिम मयाम् खोलो र साप्सु खोलो।

आवादी—यस इलाकामा भोजपुर जिल्ला छ। मुख्य बासिन्दा किराँती छन्। अरू जातका मानिस थोरै छन्। यहाँ २७०००० मानिस छन्।

मुख्य बस्ती—भोजपुर, यहाँ गोस्वारा, मूलजंगीपरेठ, माझकिराँत माल, अदालत, पाठशाला र हुलाक छन्। खिकामाछा—यहाँ बजार र पाठशाला छन्। खोटाङ्—यहाँ छोटीजंगीपरेठ छ। दिलाङ्—यहाँ छोटीजंगीपरेठ र पाठशाला छन्।

—०—

**पल्लो किराँत इलाका**—सीमाना-उत्तर भोट, पूर्व भारतवर्षको दार्जिलिंग र इलाम जिल्ला, दक्षिण मोरङ् जिल्ला, पश्चिम चिसंखु र भोजपुर जिल्ला।

आवादी—यस जिल्लाका मुख्य पुराना बासिन्दा लिम्बु हुन्। तर अरू जातिका मानिस पनि छन्। यहाँको जनसंख्या ३५३००० छ।

मुख्य बस्ती—धनकुटा, यहाँ गौंडा, दफ्तर, अपील, अदालत माल, पैसा टकसार, पाठशाला अस्पताल, आयुर्वेदिय औषधालय र हुलाक छन्। यो जिल्लाको सदर मुकाम हुनाले यहाँ बजार पनि छ। म्याङ्लुङ् चैनपुर—यहाँ मालअड्डा, पाठशाला र हुलाक छन्। ताप्लेजुङ्—यहाँ अमिनी, पाठशाला र हुलाक छन्।

ओलाङ्‌चुङ्‌—यहाँ भन्सार अड्डा र गारत चौकी छन्। हटिया-यसका उत्तर भागमा भोट जाने बाटोको प्रसिद्ध ठाउँ छ। तांपके, आठराई, मुलपानी।

नदी—अरुण, पश्चिम सीमाना तमोर र कावेरी पूर्व उत्तर सीमानामा छन्।

इलाम—सीमाना-पश्चिममा नमर नयाँ खोलो, निमु खोलो, पूर्वमा भारतवर्षको दार्जिलिङ्‌ जिल्ला, उत्तरमा भोट राज्य सीमाना, दक्षिणमा मोरङ्‌ पर्छ। यहाँको जनसंख्या ८७००० छ।

मुख्य बस्ती—इलाम, माइपार, पुवापार, फाकफोक र दशमझिया हो।

नदी—तमरखोलो अरू माईखोलो, जोगमाईखोलो र फाक-फोक, देउमाईखोलो समेत सानासाना नदी छन्।

—०—

## पश्चिम पहाडी जिल्लाहरू

**पश्चिम नं० १ इलाका**—सीमाना-उत्तर भोट। पूर्व चौतरा, दक्षिण त्रिशूला, महेशखोलो, [मुख्या होमनाथका पिता कल्लेरीका बिर्तावाल नन्दु मुखियाले फर्काएको] चिसापानी गढी, चितवन र खास नेपाल पश्चिम बुढीगण्डकी।

आबादी—यो इलाका नुवाकोट, लामीडाँडा, सल्यान, पाँच-सय खोलो र धादिङ्‌ मिलेर बनेको छ। यस इलाकामा १६५०० मानिस छन्।

मुख्य बस्ती—नुवाकोट—यो जिल्लाको सदर मुकाम हो। यहाँ गोस्वारा, माल, अदालत र जङ्गी परेठ छन्। यहाँ मुख्य देवी भैर-वीको मन्दिर पनि छ। त्रिशूलीबाजार यहाँ मुख्य देवी त्रिपुरसुंदरी

छन । बड़ादशैंका दिन ठुलो यात्रा हुन्छ । रम्वागढी—यहाँ माल अदालत र एउटा जङ्गीपरेठ रहेको छ । यहाँ एउटा पहरा भित्र प्रसिद्ध गुप्तेश्वर महादेव छन । पाँचमय खोला—केरुङ् भोट तिरको आवत जावत यहीं बाट हुन्छ । यहाँ जङ्गीपरेठ र भन्सार छन । कपिलास, धुन्चे, नर्जा, धैबुङ्, लामीडाँडा, धुनीवेसी, सल्यान, बुढीथुम, कटुजे, धादिङ्, गजुरी, मानखु, सुनखानी, छत्रबजार, किराञ्चोक ।

नदी—त्रिशूली, लामटाङ् खोला, अंखुखोला [ बुढीगण्डकी को शाखा ] तादीखोला [ त्रिशूलीको शाखा ] ।

**पश्चिम नं० २ इलाका**—सीमाना—उत्तर अठारसय खोला लार्केभोट, पूर्व र दक्षिण बुढीगण्डकी, पश्चिम चेपेखोला मर्स्याङ्दी—

आवादी—यस जिल्लामा गोरखा एक जिल्ला मात्र छ ।

यहाँको जनसंख्या ७ हजार मानिसको छ ।

मुख्य वस्ती—गोरखा—यो इलाकाको सदर मुकाम हो । यहाँ गोरखारा, माल अदालत र मूलजङ्गीपरेठहरू रहेका छन । यहीं गोरखनाथ र कालीको दर्शनीय मन्दिर छन । यसको नजीके श्रीमनकामना भगवतीको मन्दिरछ । मार्गशुक्ल र जेष्ठकृष्ण पंचमीमा यात्रा समेत हुन्छ । मकै, सिङ्, अरु, स्यार्ताङ्, सिरानचोक, बोर्लाङ्, खोप्लाङ्, ध्यालचोर, लुईटेलर । नदी—दरौदी नदी [बीचमा] बुढीगण्डकीको [ पूर्वीसीमानामा ] चेपेखोला र मर्स्याङ्दी पश्चिमी सीमाना ।

—०—

**पश्चिम नं० ३ इलाका**—सीमाना—उत्तर—मनाङ्भोट, पूर्व—चेपेखोला मर्स्याङ्दी, दक्षिण—कालीगण्डकी, देउघाट, पश्चिम मोदीखोला ।

आवादी—लमजुङ्, कास्की। यहाँको सुन्तला प्रसिद्ध छ। तनहुँ, रीसिङ्, घिरिङ्, ढोर समेत जम्मा ६ जिल्ला मिली यो इलाका बनेको छ।—रिसिङ्, घिसिङ्, तनहुँ पुर्कोट, डुम्रीखर्क आँखु। यहाँ कपासको खेति विशेष हुन्छ। यिनो मद्धे पछिल्ला दुइ जिल्ला साना साना छन्। यसको आवादी २२२००० छ।

मुख्य बस्ती—पोखरा इलाका भरको सद्र मुकाम यही हो। यहाँ गोस्वारा, मूलजङ्गीपरेठ, अपील, अदालत, राज्य तहसील, हुलाक, पाठशाला छन्। यहीं गण्डकी प्रदेश भरको ठुलो बजार पनि छ। यही श्रीविन्ध्यवासिनी भगवती छन्। अर्घौं, तल्लाकोट [कास्कीमा] कुन्छा—यहाँ पश्चिम ३ नम्बरको जंगीपरेठ र राज्य तहसीलको छोटो अड्डा, औषधालय र ठाऊँ ठाऊँमा पाठशाला, हुलाक छन्। घनपोखरा, पानचोका, दुरां डाँडा, चिती, परेवाडाँडा [लंजुङ्मा] बंदीपुर, तनहूँ, रिसिङ्, घिसिङ् र ढोर समेतको सदर मुकाम यहीं हो। यहाँ जङ्गीपरेठ, माल, अदालत, हुलाक, पाठशाला र औषधालयहरू छन्। तनहूँ, मूरतनहूँमा, साभुङ् रिर्मीङ्मा पुरकोट।

नदी—[चेपे र गोरखा र लंजुङ्का सिमानामा] मर्स्याङ्दी। गोरखा र तनहूँ सीमानामा [दोर्दीखोलो] मर्स्याङ्दीको उत्तर भाग लमजुङ्मा मादी, लंजुङ् र कास्कीका सीमानामा सेती, कास्कीमा, कास्की र लंजुङ्का सीमानामा तनहुँ र रिसिङ्का सीमानामा, मोदी कास्की र पर्वत जिल्लाका सीमानामा।

प्रसिद्ध ठाउँ—करापुर लमजुङ्मा मादीको तीरमा यहाँ ईशानेश्वर महादेवको प्रसिद्ध मन्दिर छ। शिवरात्रि देखि फागुन् पूर्णिमा सम्म यात्रा हुन्छ।

---

**पश्चिम ४ नम्बर इलाका**—सीमाना–उत्तर थाक खोलो र मुस्ताङ् भोट, पूर्व सेतीगण्डकी, मोदीखोलो दक्षिण र पश्चिम कालीगण्डकी ।

आबादी–नुवाकोट [पल्लो] भीर्कोट, गह्रौं, सतौं, पैयूँ समेत ५ जिल्ला मिली यो इलाका बनेको छ । पहिला दुइ जिल्ला साना-साना छन् । अदालतको काम बाहेक कालीनदी पूर्वको पर्वत जिल्लाको ठुलो भाग पनि यसै इलाकामा गाभिएको छ । यहाँ १ लाख ८३ हजार मानिसको जनसंख्या छ ।

मुख्यबस्ती—नुवाकोट–यो बस्ती इलाकाको सदर मुकाम हो । यहाँ गोस्वारा, मूलजंगीपरेठ, माल, अदालत, पाठशाला, हुलाक र अस्पताल छन । पुतली खेत–यहाँ सानो बजार छ । स्याङ्जा, लिमिठाना, कुस्नी, देउराली, वर, वाहाकोट, कोल्मा, ( नुवाकोट जिल्लामा ) कुस्मा–यहाँ छोटी जङ्गीपरेठ र सानो बजार छ । मोदीबेनी–काली र मोदीको दोभानमा यो एक प्रसिद्ध मोदीबेनी तीर्थ छ । देउपुर, धराङ्ग, दाङ्सङ्ग ( पर्वत जिल्लामा ) भीर्कोट [भीर्कोटमा] गह्रौंकोट–यहाँ छोटी जङ्गीपरेठ छ । [गह्रौंमा] माल कटेरी, चादा [सतौंमा] धुवाकोट, वाछागाऊँ [पैयूँमा] ।

नदी–काली [ पर्वत जिल्लामा ] गह्रौं, पैयूँ, सतौं पर्वत र गुल्मीको सीमानामा] मोदी (कास्की र पर्वतको सीमानामा) आँधी खोलो [भीर्कोट जिल्लामा] ।

**पाल्पा र गुल्मी समेत ८ जिल्ला**—सीमाना- उत्तर भोट, पूर्व कालीगण्डकी, दक्षिण बुटौल, पश्चिम प्यूठाना ।

आबादी—पाल्पा, गुल्मी, अर्घा, खाँची, इस्मा, मुसीकोट, पर्वत, गलकोट र धुर्कोट समेत जम्मा ६ जिल्ला पाल्पा गौंडाका तालुकामा रहेका छन् । पाल्पा, पर्वत र गुल्मी तीन जिल्ला ठुला

छन्, अरू साना साना छन्। पर्वतका उत्तरभागमा थाकखोला र थाकखोलाको उत्तर पट्टि मुस्ताङ् भोट छ। नवै जिल्लामा गरी जम्मा ३ लाख ७१ हजार मानिस छन्।

मुख्यबस्ती तानसेन वा श्रीनगर—यो नवै जिल्लाको सदर मुकाम हो। यहाँ एउटा सानो शहर छ। पाल्पा गौंडा अदाल, माल (पाल्पा जिल्लाको) अदालत, अस्पताल, आयुर्वेदीय औषधालय पनि यहीं छन्। यो जिल्लामा भाँडाहरू बेस बन्दछन्। त्यसमा पनि विषेश गरी पाल्पाली हुक्का, करुवा, कचौरा, अंखोरा राम्रा र बलिया हुन्छन्। तानसेन हालको बस्ती र श्रीनगर पुरानो बस्ती हो। नयाँकोट वा जिनागढी—यो एउटा प्रसिद्ध लड़ाई भएको ठाऊँ हो। यसै ठाउँमा कर्णेल वजीरसिंह थापाको मातहतमा गोर्खालीले जनरल उड्‌ को मातहतका वृटिश सेनालाई संवत् १८७१ सालमा हराएका थिए। वलूथ्या झगढी, ठूलो हटिया (पाल्पामा) चन्द्रकोट, रिडी—कालीका तीरको प्रसिद्ध तीर्थ हो। यहाँ एउटा सानो बजार छ। वामी खर्जेङ्ग (गुल्मीमा) बागलुङ् पाल्पा बाहेक अरू आठ जिल्लाको सदर मुकाम हो। यहाँ माल र अदालत छन्। भीमपोखरा, बेनीशहर—काली र मस्र्याङ्दिका दोभानको सानो बजार छ। यो भोट या मुक्तिनाथ जाने बाटोमा रहेको छ। दान—थाकमा, यहाँ नूनको भन्सारअड्डा छ। टुकुचे—थाकमा, यहाँ अदालत छ।

नदी—कालीगण्डकी-यस नदीमा शालिग्राम पाइने हुनाले यसलाई शालीग्रामी नदी पनि भन्दछन्। [पर्वत जिल्लामा] वड़ीगाड [गुल्मीमा] मस्र्याङ्दी [पर्वतमा] ई दुवै नदी कालीका सहायक हुन।

**प्यूठाना जिल्ला**—सीमाना—उत्तर पर्वत र सल्याना, पूर्व अर्वो र खाँचा, दक्षिण खाँचो पश्चिम रोल्पा सल्याना।

आबादी—यहाँको जनसंख्या १ लाख २२ हजार मानिसको छ।

मुख्यबस्ती—प्यूठाना,—जिल्लाको सदर मुकाम हो। यहाँ गौंडा माल र अदालत छन। यहाँ प्राचीन जंगी असबाबखाना पनि छ। यहाँ देखि ६।७ कोस पर स्वर्गद्वारीको लेक छ। त्यहाँ एक प्रसिद्ध महात्मा थिए।—बादीकोट, लिवाङ् द्वारी।

हिमालय पर्वतका उत्तर भागमा पूर्व पट्टि मुस्ताङ्ग भोट हिमालय र पश्चिमपट्टि पाल्चुङ्गहङ्गा हिमालय छ। मुस्ताङ्गका दक्षिणपट्टि थाक र पाल्चुङ् हङ्गाका दक्षिणमा छार्कीभोट ( भोटेबस्ती ) छ। मुस्ताङ्गको उत्तर भंज्याङ्ग पार गरी र पाल्चुङ्गहङ्गा हिमालयका उत्तर पश्चिम भागमा १६६०० फूट अग्लो मरेमभज्याङ्ग पार गरी भोटमा आवत जावत हुन्छ। मुस्ताङ्ग हिमालयका दक्षिणपट्टि धौलागिरि हिमालय छ। यसको धौलागिरि भन्ने टाकुरो २०,८१० फूट अग्लो छ। कालीनदीका बायाँ पट्टि थाक खोलाका २११४२ फूट अग्लो ठाउँमा मुक्तिक्षेत्र पर्दछ। यहाँ मुक्तिनाथको प्रसिद्ध मन्दिर छ। गर्मीमा त्यहाँ भारतका समेत हजारौं यात्रीहरू आउँदछन। मुस्ताङ्गमा दामोदरकुण्ड भन्ने कालीका मूलको तीर्थ छ।

नदी—माड़ीखोला, भिरुक—यी दुवै नदी मिले पछि रापती कहलाउँछ।

**सल्याना जिल्ला**—सीमाना—उत्तर जुम्ला, पूर्व प्यूठाना, पश्चिम दाङ् देउखुरी, बाके, बर्दिया, पश्चिम दैलेख, सुर्खेत।

आबादी—यस जिल्लाका उत्तर भागमा जाजरकोट माललेटा र दक्षिण भागमा फलवाङ्ग भन्ने नेपाल सरकारका आधीनमा रहेका राज्य छन। या जिल्लामा जम्मा २ लाख १५ हजार मानिस छन। यस मध्ये सरकारी इलाकामा करीब १ लाख ६ हजार, फलाबाङ्मा करीब ५ हजार र जाजरकोटमा करीब ७४ हजार मानिस छन।

मुख्यनदी—सरकारी इलाकामा—सल्याना—यहाँको अदुवा बडा असल हुन्छ। यसै अदुवाबाट असल खालको सूठो बन्दछ। यत्तिको असल सूठो देश भरमा अन्त कतै पाइदैन। ( चारदारी ) मालनेटा—यहाँ मकुमहर ताज छ। रुकुमकोट—यो राजका सदर मुकाम हो। ( पल्लो ) रोल्पा गुर्माकोट, फलावाङ्‌ना—यो राज्यको सदर मुकाम हो। जाजरकोटमा जाजरकोट-५।

नदी—शारदाखोलो, बबै ( सल्याना ) भेरी ( पश्चिमपट्टि ) सानीभेरी ( जाजरकोटमा ) सानीभेरी र ठुलीभेरीको संगम जाजरकोट इलाकाका सीमानामा हुन्छ।

**दुल्लु दैलेख र सुर्खेत**—सीमाना—उत्तर जुम्ला, पूर्व सल्याना जिल्ला, भेरी नदी र बर्दिया जिल्ला, पश्चिम सेतीनदी ( ६० माल देखि )

टिप्पणी—सल्याना जिल्लाका उत्तर पट्टि जुमला जिल्ला भएको र हिमालयमा नै पर्ने हुनाले यस जिल्लामा हिमालय छैन।

आबादी—यहाँको जनसंख्या १ लाख २ हजार मानिसको छ।

मुख्यबस्ती—दैलेख—तीनै जिल्लाको यो सदर मुकाम हो। यहाँ ( गोंड़ा र दुल्लु र दैलेखको ) अदालत छ। सुर्खेत-यहाँ माल अदालत छ।

नदी—कर्नाली ( जिल्लाको माझमा ) भेरी ( जिल्लाको पूर्व र दक्षिण सीमाना )

**डोटी र आछाम**—सीमाना—उत्तर भोट, पूर्व कर्नाली, र जुम्ला इलाका, दक्षिण कर्नाली नदी र कैलाली जिल्ला, पश्चिम बैतड़ी डडेल्धुरा।

टिप्पणी–( क ) यहाँ साना साना ज्वालामुखीका चिह्नहरू छन। दुल्लुमा शिर स्थान र पाउका स्थान दुइ चिह्न मिलाई देवीको मूर्ति मानिएको छ। ती दुइका बीचमा नाभिस्थान भन्ने तीर्थ छ। दैलेखमा कोटिला नामको तीर्थ छ, यहाँ कोटिलेश्वर महादेव छन्। दुल्लुमा ज्वालामुखीका अर्को चिन्ह भएको ठाउँलाई धूलेश्वर मानिएको छ। ई ५ लाई पंचतीर्थ भन्दछन।

आबादी—डोटी जिल्लाका उत्तर पूर्व भागमा बभाङ् र बाजुरा दुई राज्य नेपाल सरकारका अधीनमा छन। यस इलाकाको जनसंख्या २ लाख १६ हजारको छ। डोटीमा १ लाख ५३ हजार, बभाङ्मा ४३ हजार र बाजुरामा २० हजार मानिस छन्।

मुख्यबस्ती–गिर्डीकोट, मंगलसेन, साते बजार [आछाममा]; पिलगढ़ी,–जिल्लाको सदर मुकाम हुनाले यहाँ एउटा बजार छ। डोटीका मुख्य गौंडा, अपील, अदालत, माल, अस्पताल, औषधालय, पाठशाला र हुलाक समेत यसैं छन। कर्णाली प्रदेश भरमा ठुलो छाउनी पनि यहीं छ। यहाँ श्रीशैलेश्वरी देवीको मेला कार्तिक पूर्णिमामा हुन्छ। राजपुर, जोगयल, चैनपुर, बाजुरा।,–बभाङ्मा राजाको सदरमुकाम। बाजुरे राजाको सदरमुकाम। थलहरा ( डोटी पूर्व भागमा )।

नदी—कर्नाली ( आछाम जिल्लाको पूर्व भागमा ) बूढ़ीगंगा ( अछाममा ), सेता ( डोटी जिल्लाको सीमानामा )।

( क ) डोटीका पूर्व भागको हिमालय जुम्ला जिल्लामा पर्दछ। पश्चिम भागमा व्याँस हिमालय छ। महाकालीका तीरैतीर गई टिङ्कर-खोला तिर लागी त्यस हिमालयको टिङ्करलिपु भंज्याङ् पार गरी भोटमा आवत जावत हुन्छ।

( ख ) खपूतङ भन्ने लेक आछाम र डोटीका सीमानामा छ। त्यहीं बभाङ्राज्यको सीमाना जोरिएको छ। त्यहाँ ठाउँठाउँमा

मैदान परेको छ। ती मैदानमा अनेकौं तलाउ र राम्रा राम्रा जंगली फूलहरू पाइन्छन्। त्यहाँ बडा बडा निगाला घारी छन्। त्यहाँका निगालामा बाघका छालाका जस्ता बुट्टा परेका हुन्छन्। ती निगालाका नली मुलुकभरमा प्रसिद्ध छन्।

आछाममा सानासाना ३ फूट सम्मका पनि दुधारे गाई हुन्छन्। आछाम र जुम्लाका सीमानामा श्रीमालिका भगवतीको मन्दिर छ। यहाँ श्रावण शुक्ल पूर्णिमामा ठूलो मेला हुन्छ।

मध्यभागमा पीलकाट गर्खाका चाखुरा लडाका र तेज हुन्छन्। पश्चिम-उत्तर भागमा गरेर ब्याँसमा नरम पाखी र गलैंचाहरू बुनिन्छन्। पश्चिम भागमा बैतडीमा चिउरीका फलको महबाट असल गुड़ बन्दछ। चिउरीका घिउबाट असल फुलेल पनि बन्दछ।

**बैतड़ी डँडेल्धुरा:**—सीमाना उत्तर भोट, पूर्व डोटी जिल्ला, दक्षिण कंचनपुर, पश्चिम महाकाली नदी। हाम्रो मुलुकको अन्तिम पश्चिमी सीमाना यही हो।

आवादी—यस जिल्लाको आवादी ७८ हजार मानिसको छ।

मुख्यबस्ती—डंडेल्धुरा,—यो डंडेल्धुरा जिल्लाको सदर मुकाम हो। यहाँ गौंडा, अदालत, पाठशाला र औषधालय छन्। यहाँबाट २ कोस उत्तर प्रसिद्ध श्रीउग्रतारा देवीको कार्तिकशुक्लपूर्णिमामा मेला हुन्छ। अजैमीर, मस्टामाण्डु (डंडेल्धुरा), बैतड़ी—बैतड़ी जिल्लाको सदरमुकाम हो। यहाँ गौंड़ा अदालत, माल र पाठशाला छन्। यसको १ कोस नैऋत्य भागमा श्रीत्रिपुरसुन्दरीदेवीको कार्तिक शुक्लाष्टमीमा मेला हुन्छ। दार्चुला,—यहाँ एउटा अमिनी छ। पाटन, लेकम् ब्यास (बैतड़ीमा)।

नदी—चौलाने (जिल्लाको पश्चिम भागमा)।

———

जुम्ला—सीमाना—उत्तर भोट, पूर्व पर्वत, पाल्पा, दक्षिण सल्याना, दैलेख, बैतडी, डंडेल्धुरा जिल्ला भन्दा पश्चिम ( कर्नाली बाजुरा ) बभाङ् ।

आबादी—मुलुकभरका जिल्लामा यो सबै भन्दा ठूलो छ ता पनि हिमालयका काखैमा हुनाले यहाँ उब्जा बहुतै कम हुन्छ । त्यस का गाले यहाँको आबादी बहुतै थोरै छ । जनसंख्या ८६ हजार छ ।

मुख्यबस्ती—छिनासिम—जिल्लाको सदर मुकाम तिलानदीका तीरमा, यहाँ गौंडा, माल, अदालत, पल्टन, हुलाक पाटशाला समेत छन् । श्रीचन्दननाथको प्रसिद्ध मन्दिर पनि यहीं छ । तीब्रकोट—पूर्व भागमा, यहाँ त्रिपुरसुन्दरीदेवीको प्रसिद्ध मन्दिर छ। हुम्ला,—भोटका सीमानानेर यहाँ अदालत छ । जुम्ला जिल्लाको उत्तर पश्चिम भाग पनि हुम्ला कहिन्छ । सिजा र पाँचसय ।

नदी—कर्नाली ( जिल्लाको मुख्य नदी, डोटीको सीमानामा र जिल्लाका माझमा ); टाँके खोलो, मुगुखोलो ( उत्तर भागमा ) ।

—०—

## भित्री मधेस

**मकवानपुरः**—सीमाना—उत्तर बूढी गण्डकी; पूर्व धूलिखेल सिंधुली; दक्षिण रौतहट, बारा, पर्सा, चितवन पश्चिम बूढी-गण्डकी ।

आवादी—यस जिल्लामा ४८ हजार मानिस छन् ।

मुख्यबस्ती—मकवानपुर यहाँ माल अड्डा र एक गढी ( चिसापानी गढाका तालुकको ) छ । चिसापानी—महाभारतका

दक्षिण पाखामा, यहाँ एक गढ़ी, अदालत र भन्सार छन् । यसैका फेदोमा भीमफेदी भन्ने सानो बजार छ । नेपालबाट मधेसमा आवत जावत गर्ने मुख्य गढ़ा यही हो ।

जुम्लामा पूर्वदेखि लिएर क्रमले लदाख (पाल्चुङहुङ्गा हिमालय) छाङ्ला, ताख, हिमालय छन् । लदाख हिमालयमा टाँके खोलाको बाटो गरी नाम्जा भन्ने १६ २२० फूट अग्लो टाकुरा नेरको भंज्याङ पार गरी भोटमा आवत जावत हुन्छ । छाङ्ला हिमालयमा चुत्राखोलाको बाटो गरी ताखु नेरको भंज्याङ र ताख हिमालयमा कर्नालीको बाटो गरी तालककर नेरको भंज्याङ पार गरेर पनि भोटमा आवत जावत हुन्छ । कान्द्राङ–पश्चिम भाग-को सानो गढ़ी यहाँ छ । यो चिसापानी गढ़ीको मातहतमा छ । उपर्तोङ—

नदी–बाग्मति (पूर्व भागमा) रापति (पश्चिम भागमा) ।

सिंधुली ?–टिप्पणी–काठमाडौंबाट हिन्दुस्तान जाने मूल सड़कमा भीमफेदीदेखि चुरे सम्मको ठूलो सड़क यसै जिल्लामा पर्दछ । चुरेमा पहाड़ छेड़ी सुरुङ बनाई त्यो मूल बाटो जोड़िएको छ ।

सीमाना–उत्तर धूलिखेल इलाका भ्यागुरे खोलो, सुनकोसी, पूर्व उदयपुर, दक्षिण कमला नदी, सर्लाही, महोत्तरी, पश्चिम बागमती मकवानपुर ।

आबादी–यस जिल्लाका उत्तर भागमा मौजाहरू दोलखा मालबाट, पश्चिम भागका मौजाहरू मकवानपुर मालबाट र दक्षिण भागका मौजाहरू मलङ्गवा (सर्लाही) मालबाट चर्ची-आएको छ । जनसंख्या ६६ हजार मानिसको छ ।

मुख्यवस्ती–सिंधुली–यहाँ अदालत भन्सार र एउटा गढ़ी छन् । हरिहरपुर–यहाँ पश्चिमभागको सानो गढ़ी छ ।

नदी–सुनकोसी ( उत्तर पट्टि जिल्लाका सीमानामा ) (कमला दक्षिण पट्टि जिल्लाका सीमानामा ) मरिन खोलो ।

**उदयपुर**—सीमाना–उत्तर चुरे, दक्षिण महाभारत, पश्चिम सप्तकोसी, पूर्व कमला नदी ।

आवादी—यस इलाकाको जनसंख्या ४६ हजार छ ।

मुख्यबस्ती—उदयपुर, यस इलाकाको सदर मुकाम यही हो । यहाँ गौंड़ा अदालत, गढ़ी र मालअड्डा समेत रहेका छन । चिसापानी, चाँदण्डी ।

**चितवन र नवलपुर**—सीमाना—उत्तर महाभारतलेक ( तानसेनको पूर्वी चुरचो ), पूर्व मकवानपुर, दक्षिण सोमेश्वर पर्वतश्रेणी, पश्चिम बुटौल तानसेन । चितवन र नवलपुरलाई बीचमा नारायणीनदिले छुट्याईदिएको छ ।

आवादी–चितवन जिल्ला अलग्गै रहेको छ, तर नवलपुर जिल्ला बुटौल पाल्ही जिल्लामा गाभिएको छ । यस इलाकामा जम्मा ३२ हजार मानिस छन । चितवनमा २१ हजार मानिस र नवलपुरमा अन्दाजी ११ हजार मानिस छन् ।

मुख्यबस्ती—भुवानी जिल्लाको सदर मुकाम यही हो । यहाँ माल र अदालत छन् । ठोरी–यहाँ बीरगंज गोस्वाराका मातहतमा रहेका बजार अड्डा र काठमहाल छन । सोनबर्सा—३ र ४ यी दुवै ठाउमा बेथरी गोस्वाराका मातहतमा रहेका हात्तिसार छन् । उपर्दाङ् ( चितवन तर्फ ), नवलपुर, गैंडाकोट, कोल्हुवा ( नवलपुरमा ) ।

यस जिल्लाका जंगलमा प्रशस्त जंगली जानवरहरू पाइन्छन् । तिन मध्ये विशेष हात्ति गैंडान् पाइन्छ ।

**दाङ् देउखुरी र सुनार**—सीमाना—उत्तर सल्यान पूर्व पाल्पा, दक्षिण बुटौल, भारतवर्षको गोण्डा र बहराइच जिल्ला, पश्चिम बाँके ।

आबादी—दाङ् करीब ३ खण्डको १ खण्ड फलाबाङ र ज्यमा मिलेको छ । बाँकी दाङ् र देउखुरी जिल्ला खजहन गोस्वाराका मातहतमा रहेका छन् । सुनार जिल्ला सानो छ यो बाँके बर्दिया गोस्वाराको मातहतमा छ । यस इलाकाको जम्मा जनसंख्या १ लाख १२ हजार छ । फलाबाङ्का हिम्मात दाङ्मा अन्दाजी ३१ हजार सरकारी, इलाका दाङ् र देउखुरी मा अन्दाजी ७८ हजार र सुनारमा ३ हजार मानिस छन् ।

मुख्यबस्ती - घोराही—जिल्लाको सदर मुकाम हो । यहाँ दाङ् अमिनी र माल छन्, सानो बाजार पनि छ । छिल्ली बिजौरी—यहाँ दाङ् देउखुरी माल छ । ( दाङ्मा ) कोइलाबास जिल्लाको मुख्य बजार यहाँ बाँके बर्दिया गोस्वाराका मातहतमा काठमहाल र कोइलाबास बजार छन् ( देउखुरीमा ) । भोजपुर ( सुनारमा ) ।

मुख्य नदी—राप्ती ।

---

# मधेस तराई

**पर्सा र बारा**—सीमाना—उत्तर मकवानपुर जिल्ला पूर्व रौतहट, दक्षिण भारतको चम्पारन जिल्ला, पश्चिम भारतको चम्पारन जिल्ला र चितवन जिल्ला । यसै जिल्लाहरूमा पर्सा र बाराको बीचमा सिर्सिया नदी पर्दछ ।

आवादी—यी दुवै जिल्ला वीरगंज गोस्वाराका मातहतमा छन । यहाँको जम्मा जनसंख्या २ लाख ७६ हजार मानिसको छ ।

मुख्यबस्ती—अलौ, रामभौरी—यहा एउटा हात्तिसार छ । पर्सा (पर्सामा) वीरगंज—यहाँ गोस्वारा, पर्सामाल, अमिनी, भंसारअड्डा, छपकैया काटमहाल, टेलीफोनआफिस, अस्पतालहरू छन् । एउटा ठूलो बजार छ । यहाँको फलामे तापके प्रसिद्ध छ । यसका दक्षिण दुइ माइलमा भारतको रक्सौल स्टेशन छ । कलैया—यहाँ बारा जिल्लाको अमिनी, चन्द्रमिडिल स्कूल र एउटा सानो बजार पनि छ । बरेवा—बारा माल यहाँ छ । भवानीपुर, अमलेखगंज—स्वर्गवासी श्री ३ चन्द्रसमशेर बाट कमियाहरू अमलेख भएको उपलक्षमा रहेको नाऊ हो । यहाँ देखि २४ माइल दक्षिण रक्सौलसम्म नेपाल गभर्नमेन्ट रेल्वे छ । (बारामा)

नदीहरू—गनगाई, सिर्सिया, तिलाउ (पर्सामा) बंगरी, जमुनी, (बारामा) पसाहा, बकेया, तियर ।

—:❀:—

**रौतहट र सर्लाही**—सीमाना—उत्तर सिंधुलीगढी, मकवानपुर जिल्ला, पूर्व महोत्तरी जिल्ला, दक्षिण भारतवर्षको मुजफ्फरपुर जिल्ला, पश्चिम बारा जिल्ला ।

आवादी—यी दुवै जिल्ला ६४ साल कार्तिक १ गतेदेखि नयाँ खडा भएको रौतहट सर्लाही गोस्वाराका मातहतमा रहेका छन् । दुवै जिल्लाको गरी जम्मा जनसंख्या २ लाख ६५ हजार छ

मुख्यबस्ती - गोर, कटहरबन, बैरिया, छरौना,—यो रौतहट

जिल्लाको सदर मुकाम हो। यहाँ गोस्वारा, छतौना जमुनीद्वार, माल, अमिनी, बजार अड्डा, टेलीफोन आफिस र अस्पताल छन्।

पर्सा, समनपुर, हजमनियाँ, मोल्सरी (गौतहटमा)। मलंगवा- यहाँ सर्लाहीमाल, अमिनी, हुलाक, टेलीफोनआफिस, तेजारथ, अस्पताल, पाठशाला, बजार अड्डाहरू सरकारिया र मरिङ् पत्रिङ् विर्ता माल विर्ता काठमहाल पनि छन्। हरपुर— यहाँ हरपुर हात्तिसार छ। हरिपुर्वा—यहाँ सरकारी आयुर्वेद त्रिचन्द्र औषधालय छ। (सर्लाहीमा)।

नदीहरू—बागमति, मनुसमारा, बघैया (गौतहटमा) लखनदेही, झिमबाँके (सर्लाहीमा)।

**महोत्तरी**—सीमाना—उत्तर सिंधुली, पूर्व कमला र सप्तरी, दक्षिण भारतवर्षको मुजफ्फरपुर र दरभंगा, पश्चिम बाग्मती नदी र गौतहट जिल्ला।

आवादी यो जिल्ला महोत्तरी गोस्वाराको मातहतमा छ। यहाँको जम्मा जनसंख्या ३ लाख १४ हजार मानिसको छ।

मुख्यबस्ती -जलेश्वर—यो सदर मुकाम जलेश्वर महादेवका नामबाट रहेको छ। यहाँ गोस्वारा, महोत्तरीमाल, अमिनी, बनजाँच, साड़ा गोदाम, महोत्तरी गुठीमाल, टेलीफोनआफिस, एक्सचेञ्ज आफिस, मिलिटरीब्यारेक, तेजारथ, अस्पताल, बजार-अड्डा छन्। यहाँ बजार पनि छ। जनकपुर,—यहाँ रामचन्द्र-जीको र जानकीजीको दुइ प्रसिद्ध मन्दिर र अनेकौं पवित्र कुण्डहरू छन्। यहाँ चैत्रशुक्ल नवमीमा भारी मेला लाग्दछ। जनक-पुरदेखि मोगलान जयनगर स्टेशनसम्म नेपाली जयनगर जनकपुर रेल्वे पनि छ। मटिहानी, भरमपुरा—यहाँ काठमहाल छ। रूपौला—यहाँ एउटा हात्तिसार छ। सबेला, रघुनाथपुर, बैरिया,

धनुखा—यहाँ प्रसिद्ध धनुष मन्दिर छ, माघमा मेला पनि लाग्छ। खजुरी, महुवा—जयनगर जनकपुर रेलवेको हेडक्वार्टर छ। झीभा, चिसापानी, मनराकट्टी।

नदी—मडहा, बिगही, रातो, जलाधर, गंगाजमुनी (यी दुइ सरकारको सीमानामा छन्), कमला (सप्तरी र महोत्तरीको सीमानामा पर्छ)।

**सप्तरी**—सीमाना—उत्तर उदयपुर, पूर्व सप्तकोसी, मोरङ, दक्षिण भारतवर्षको दरभङ्गा र भागलपुर, पश्चिम कमला नदी, महोत्तरी जिल्ला।

आवादी—यो सिराहा समेतको जिल्ला सप्तरी गोस्वाराको मातहतमा छ। यहाँ जम्मा ३ लाख ७८ हजार मानिस छन्।

मुख्यबस्ती—हनुमाननगर—जिल्लाको सदर मुकाम यही हो। यहाँ एउटा ठूलो बजार छ। सप्तरी जिल्लाका माल, गोस्वारा, अमिनी, बजारअड्डा, हुलाक, तेजारथ र टेलिफोन आफिस, अस्पताल छन्। वनजाँच, पुलिसको थाना भगवानपुरमा छ। कोइलाडी—यहाँ त्रिजुगा नदीमा एउटा १५ मील लामो चन्द्रनहर बनेको छ। यसका हाँगाहरूको लम्बाई ४६ मील छ। यस नहरले सप्तरी जिल्लामा प्रगन्ना भडौरा, ग्वालिमा, पकरी समेत धेरै जमीनलाई पानी पुऱ्याएको छ। तलाम्री, सखुवनी—यहाँ एउटा हात्तिसार छ। फत्तपुर, भगवनपुर, छप्की ोरवा, बरमझियाँ—यहाँ चन्द्रनहर अड्डा रहेको छ। भगवानपुर, गुर्दीगाउँ, लाहान्-बजार, सिरहा—यहाँ सिरहा ४ प्रगन्नाको माल, अमिनी, तेजारथ, टेलीफोन आफिस छन्। चन्द्रगंज यहाँ एउटा बजार र बजार

अड्डा पनिछ । यहाँ बाट प्रशस्त सुर्तीको निकासी हुन्छ । सारंसार, मिर्चैला, औरही ।

सप्तकोसी र कोकाहा नदीको संगममा ।

नदी—कमला ( पश्चिम सीमानामा ) कोसी ( पूर्व सीमानामा ), त्रिजुगा—वाराहक्षेत्रमा-श्रीवाराह भगवान्‌को प्रसिद्ध मन्दिर छ । यहाँ कार्तिकशुक्ल पूर्णिमामा ठूलो मेला लाग्छ । बलान, जमुनी, गोबरजाल ।

**मोरङ्**—सीमाना-उत्तर धनकुटा ( पल्लोकिरांत ) इलाका महाभारत लेक, पूर्व मेची नदी, भारतवर्षको दार्जिलिङ् जिल्ल, दक्षिण भारतवर्षको पुर्निया जिल्ला, पश्चिम सप्तकोसी र सप्तरी जिल्ला ।

आबादी—यो जिल्लाको पश्चिम भाग विराटनगर गोस्वाराका र पूर्व भाग झापा छोटी गोस्वाराको मातहतमा छ। यहाँको जनसंख्या २ लाख ११ हजार मानिसको छ ।

मुख्यबस्ती—विराटनगर—जिल्लाको सदर मुकाम यही हो । यहाँ एउटा बजार छ। यहीं गोस्वारा माल ( रतुवा पश्चिमका प्रगन्नाको ), अमिनी, बजार अड्डा, कोसी पुर्वोरी काठमहाल, वनजाँच र छोटी अस्पताल छन । हालमा यहाँ १६ लाखको पूजीबाट सनको एउटा भारी मील खुलेको छ । जुद्धनगर—यो महाभारतका फेदीको धरान जुद्धनगर बजार हो यहाँ एउटा बजार अड्डा छ ( धरान ), विजयपुर, चतरा, झापा, झिलमिलिया यहाँ झापा छोटी गोस्वारा ( झापामाल रतुवा पूर्वका प्रगन्ना ), अमिनी, वनजाँच हुलाक, तेजारथ बजारअड्डा, पाठशाला, अस्पताल छन । अनारमनि, भद्रपुर—यहाँ एउटा बजार र बजारअड्डा छ। आठ-

मौजा, भूलाबारी, सतीघट्टा—यहाँ कीचकबध भएको हो भन्ने किंवदन्ति छ ।

नदी—कोसी ( पश्चिम सीमाना ), रतुवा, कनकाई, बकाहा मेची । पूर्वको हाम्रो सीमाना यहाँ मेची सम्म हो ।

**पाल्ही र माझखण्ड**—सीमाना पाल्पा जिल्ला, पूर्व नारायणीनदी, दक्षिण मोगलान गोंडा र बस्ती जिल्ला, पश्चिम खजहनी जिल्ला ।

आवादी—यी दुवै जिल्ला भैरहवा गोस्वाराका मातहतमा छन् । दुवै जिल्लाको जनसंख्या १ लाख ८५ हजार मानिसको छ ।

मुख्यबस्ती -भैरहवा यो जिल्लाको सदर मुकाम हो । यहाँ एउटा बजार छ । गोस्वारा, माझखण्डको माल, अमिनी, अडिटरआफिस र अस्पताल यहीं छन् । बुटौल बजार—यो बुटौल जिल्लाको मुख्य बजार हो, यहाँ बजार अड्डा अस्पताल छन । भगवानपुर परासी,—यो पाल्ही जिल्लाको सदर मुकाम हो, यहाँ एउटा बजार छ । यहीं पाल्ही जिल्लाको माल, अमिनी, बनजाँच, बजारअड्डा र अस्पताल छन् । त्रिवेणी—यहाँ एउटा सानो बजार छ । त्रिवेणी काठमहाल र बजारअड्डा यहीं छन् । ( पाल्हीतर्फ )

नदी—तिनाउ ।

**खजहनी र स्यूराज**—सीमाना—उत्तर पाल्पा, पूर्व पाल्ही माझखण्ड जिल्ला, दक्षिण भारतकोबस्ती जिल्ला, पश्चिम भारतको बहराइच जिल्ला ।

आवादी—ई दुइ जिल्ला खजहनी गोस्वाराका मातहतमा पर्दछन । यहाँको जनसंख्या १ लाख २० हजार मानिसको छ ।

मुख्यबस्ती—तौलिह्वा,—जिल्लाको सदर मुकाम यही हो। गोस्वारा, माल, अमिनी, बाणगंगा, काठमहाल, अडिटर आफिस, बनजाँच र अस्पताल यहीं छन्। झंगमनोहरपुर—यहाँ एउटा हात्तिसार छ। (खजहनीमा)। बहादुरगंज-स्यूराज जिल्लाको सदर मुकाम यो हो। यहाँ माल र अमिनी बसेका छन्। कमान-गंज, महाराजगंज, शिवगढ़ी (स्यूराजमा)।

नदी—बाणगंगा, सुरही, चिरोही।

**बाँके र बर्दिया**—सीमाना—उत्तरमा बर्दिया माथि अलिकति दैलेख पर्छ, अरु सब सल्याना जिल्ला; पूर्व दाङ, देउखुरी; दक्षिण भारतको बहराइच, पश्चिम कर्नाली नदी। यी जिल्ला-हरूलाई मान भन्ने नदीले छुट्याएको छ।

यी दुइ जिल्ला बाँके बर्दिया गोस्वाराका मातहतमा छन्। यहाँको जनसंख्या १ लाख ५ हजार छ।

मुख्यबस्ती—बाँके—यो जिल्लाको सदर मुकाम हो। यहाँ एउटा बजार छ। गोस्वारा, माल, अमिनी, बजारअड्डा, रापती काठ-महाल, बनजाँच र अस्पताल यहीं छन। वा नेपालगंज (बाँकेमा) गुजरी—माल र अमिनी बसेको ठाउ। राजापुर—यहाँ एउटा बजार र बजारअड्डा छन्। पकरिया, गंगापटवा—यहाँ बबैकर्नाली काठमाहाल बसेको छ। पदमाहा (बर्दियामा)

नदी—रापती (बाँकेमा) कर्नाली, बबै (बर्दियामा)।

**कैलाली कंचनपुर**—सीमाना—उत्तर डोटी र बैतडी डँडेल्धुरा जिल्ला, पूर्व कर्नाली नदी र बर्दिया जिल्ला, दक्षिण भारतको मदनी नदी र खेरी र पिलीभीत जिल्लाहरू, पश्चिम महाकाली नदी। पश्चिममा हाम्रो सीमाना यही महाकाली नदीसम्म छ।

यहाँको जनसंख्या लगभग ४७ हजार मानिसको छ।

मुख्यबस्ती—कनगढी वाल्मीनगर— जिल्लाको सदर मुकाम यहीं हो। यहाँ गोस्वारा, माल, अमिनी, पथरैया मोहाना काठमहाल, वनजाँच ७ बजारअड्डा हुलाक र अस्पताल छन्। कैलाली, भजनी—पथरैया द्वारा यहां छ। जिल्ला भरको गुल्जार ठाउँ यहीं हो। सती, मालाखेति र चौमहला ( कैलालीमा ) कंचनपुर, बेलौरी—जिल्लाको सदर मुकाम हो। गोस्वारा, माल, अमिनी, काठमहाल, हुलाक, वनजाँच, चौकी र छोटो बजार अड्डा बसेका छन्। ब्रह्मदेउ, टनकपुर, जिमुवा, देखतभूली र कलुवाँपुर ( कंचनपुरमा )।

नदी— पथरैया, घुराहा, शिवगंगा, मोहाना, कादा, कनरा, खुटिया र कटनी ( कैलालीमा ) महाकाली ( शारदा ) दोदा, वतहरा, स्यहाली ( कंचनपुरमा )

## नेपालका बाइशी दून पश्चिम उपत्यका अथवा राज्य

काली, करनाली र शिंगरफ र अनेक सहायक नदीहरू द्वारा सिंचित नेपालका तिन दून हरु अनेक सानासाना दून हरुमा विभक्त भएकाछन्। सबैदूनहरु हरिला भरिला सानासाना पर्वत शृंगले सोभीत भएका छन्। सन् १७७१ गोर्खेश्वर पृथ्वीनारायण शाह का पहिले इनै बाईशी दून बाइशी राज्यका नाउले प्रसिद्ध भई जुमालेश्वरका अधिनस्त सानसाना बाइशी राजाहरुका अधिकाररमा थिए। तिनीहरुको नामावली तल लेखिएको छ।

(१) रुकम (२) पल्लो मुसीकोट (३) आछरकोट (४) बाँकी (५) शल्याना (६) मालमेटा (७) दाङ्ग (८) चिल्ली (९) मजल (१०) दार्मा (११) जेहरी (१२) डुल्लू (१३) आछाम (१४) डोटी (१५) जुम्ला (१६)वम्फाङ्ग (१७) बाजुरा (१८) भलहरा (१९) कालागाउँ (२०) घुघुरकोट (२१) दार्ना (२२) दैलेख।

## सतगण्डकी—मध्य उपत्यका वा चौबिशी दून अथवा राज्य

धवला गिरि र गोसाईं थानका मध्य भागलाई चौविशी दून वा सतगण्डक प्रदेश भन्दछन् । अघी इनै चौविशी दूनहरू चौविशीराज्यले प्रसिद्ध भई जुम्लेस्वर का अधीनस्त चौविशी राजा हरूका अधिन थिए . पछी गोर्खेश्वर पृथ्वि नारायणशाह र निजका उत्तराधिकारीहरूले क्रमसः नेपाल साम्राज्यमा मिलाएका थिए । तिनि हरूको नामावली यो हो:—

(१) तनहुङ्ग (२) रिसिङ्ग (३) घिरिङ्ग (४) गजकोँट (५) पाल्पा (६) भिर्कोट (७) गहुङ्ग (८) ढोर (९) पैञ्यू (१०) पल्लोनूवाकोट (११) सुतुङ्ग (१२) कास्की (१३) लंजुङ्ग (१४) गुल्मी (१५) अर्घा (१६) खाँच (१७) पर्वत (१८) गलकोट (१९) मुसाकोट (२०) धुर्कोट (२१) इस्मा (२२) पिउठाना (२३) खुम्रीकोट (२४) भिग्रीकोट ।

# सन् १६२० मा नेपालको सर्कारी जन्मत गणनामा भनेको नेपाल को जनसंख्या

तीन मुख्य नगरको जनसंख्या

| नगर | पुरुष | स्त्री | जम्मा |
|---|---|---|---|
| काठमाण्डू | ५३,३१३ | .५,४९२ | १,० ८०५ |
| ललितपत्तन | ५३ ६२१ | ५१,३०७ | १,०४,६२८ |
| भक्तगाऊँ | ४७,३०८ | ४५,८:८ | ६३ १७६ |

मध्य भाग तिरको

| ठाँऊ | घर | आबादी |
|---|---|---|
| उपत्यका भित्र | ६४,४४० | ३,०६,९०९ |
| उपत्यका बाहिर | १० ३६१ | ६०,१०१ |
| | ——— | ——— |
| | ७४,८०१ | ३,६७,०१० |

पश्चिमी तिरको

| | | |
|---|---|---|
| एक नम्बर | १८,३६७ | १६५,२५१ |
| दुइ नम्बर | १४,५९७ | ७९,२०३ |
| तिन नम्बर | १४,९७६ | ८२,१६० |
| चार नम्बर | २९,५२३ | १,८३,४१७ |
| पाल्पा र गुल्मी | ६३,६१५ | ३,७६,६०० |
| पियुठाना | २१,३४५ | १,२२,०६३ |
| सल्यान | ३१.५३१ | २,१४,३२९ |
| डोटी | २४,३३२ | १,५१,२२९ |
| बैतडी | ६,११६ | ७७,८६५ |
| दइलेख | ११,७८९ | ८४,१७३ |
| जुमला | १४,२९६ | ८६,०२२ |
| | —— | —— |
| | २,७८,५१७ | १६,२७,६४२ |

कास्की-लमजुंगको

| ठाँऊ | घर | आबादी |
|---|---|---|
| कास्की लमजुंग | २३,७७५ | १,३६,५६५ |
| | घर | |
| फलबंग | ७९० | ४,५३० |
| जाजरकोट | १२,१३७ | ७३,८७४ |
| बभांग | ५,८२१ | ४३,०४३ |
| बजुरा | २,४८३ | २०,२२० |
| | —— | —— |
| | ४५,००६ | २,८१,२३२ |

पूर्वतिरको

| | | |
|---|---|---|
| एक नम्बर | ३६,६६६ | २,१३,७०२ |
| दुइ नम्बर | ३१,७८५ | १ ७७,०७२ |
| तिन नम्बर | २०,६६६ | १,०८,१०६ |
| चार नम्बर | ४६,९५८ | २,६६,६६८ |
| धनकुटा | ५८,७८४ | ३,५३,०६२ |
| इलाम | १४,६७० | ८७,४७५ |
| | २,१५ ८६५ | १२,०६०८६ |

फुटकर

| | | |
|---|---|---|
| वीरगंज, बारा, परसा रौतहट | ७७ ०६५ | ४ १४,६५७ |
| महोत्तरी र सरलाही | ७१,२७९ | ४,७१,२९२ |
| सप्तरी | ६२,७६६ | ३,७७,८५५ |
| उदैपुर | ६,०३२ | ४८,६१३ |
| मोरंग ( विराटनगर र झापा ) | ३६,२५७ | २, १,३०८ |
| खजहनी र शिवराज | १९.१५६ | १,२२,२८ |
| पाल्ही माझखंड | २८,६४४ | १.८४,५८१ |
| बाँके. बर्दिया | १७ ४०५ | १,०४ ४६६ |
| कैलालि, कंचनपुर | ४.७-७ | ४६,८१६ |
| मकवानपुर | १०,१०६ | ५६,५१६ |
| कन्दरंग | १,४२५ | ९,५५६ |
| चित्तावन | १ ०८८ | १०,५२० |
| सुनार | ३५१ | २,७१८ |
| सुरखेत | ३,०६१ | १७,३२३ |
| | ३,४३,४२० | २०,८८,८२१ |

प्राकृतिक खण्डानुसार जनसंख्या ।

| खण्ड | पुरुष | स्त्री | जम्मा |
|---|---|---|---|
| पर्वत | १५,५७३,६४८ | १४,७७,६३४ | ३०,३१,८८२ |
| उपत्यका | १,८५,०३५ | १,८१,६७५ | ३,६७,०१० |
| तराई | १०,६१,०५९ | ११,१४,८०५ | २१,७५,८६४ |
| | २८,००,०४२ | २७,७४,७१४ | ५५,७४,७५६ |

—:❀:—

## हुलाक एक्स्चेञ्ज आफिसहरु ❀

श्री ५ त्रिभुवन वीरविक्रम शाहका पालामा १९९४ साल देखि नेपाल राज्य भरि बाट भारतवर्षमा जाने सादा चिट्ठी र सादा बुकपोष्टहरुमा नेपाली टिकट लगाई चलाउने नियम भए अनुसार तपसीलमा लेखिए बमोजिमका हुलाक एक्स्चेञ्ज आफिसहरु कायम गरी त्यहाँबाट नेपाल राज्य भरि चिठ्ठी पुऱ्याउने बन्दोबस्त मिलाएको छ ।

### भारतवर्षतिरका डाँकघर, नेपालतिरका डाँकघर

१ नैपाल (लिगेशन)—काठमाण्डु एक्स्चेञ्ज आफिस—यस आफिस बाट बन्दिपुर, भक्तपुर, धूलिखेल, चोतारा, तातापानी, त्रिशूली, धादिङ, रसुवा, गोरखा, चितोन र परेवाडाँडा सम्मको चिठ्ठी जान्छ ।

२ रक्सौल—वीरगंज एक्स्चेञ्ज आफिस—यस आफिसबाट अमलेखगंज, भीमफेदी, कलैया र कटहरवन सम्मको चिठ्ठी जान्छ ।

३ सुरसण्ड—जलेश्वर एक्स्चेञ्ज आफिस—यहाँ बाट सर्लाही, सिरहा, उदयपुर, ओखलढुङ्गा, सिंधुली, दोलखा, ल्याङ्ल्याङ् र हनुमाननगर सम्मको चिठ्ठी जान्छ ।

४ फर्बेसगंज—विराटनगर एक्स्चेञ्ज आफिस—यहाँ बाट रंगेली, झापा, विजयपुर, धनकुटा, तेह्रथुम, तप्लिजुङ्, भोजपुर र चैनपुर सम्मको चीठी जान्छ।

५ सुखियापोखरी—पशुपतिनगर एक्स्चेञ्ज आफिस-यहाँबाट इलाम-सम्म मात्रको चीठी जान्छ।

६ रुपैडिहा—बाँके एक्स्चेञ्ज आफिस—यहाँबाट बर्दिया, कैलाली, कञ्चनपुर, दहवन, प्यूठाना, ढुँठवा पहाड, सल्यान र दैलेख सम्म जान्छ।

७ नौतनवा बजार—भैरहवा एक्स्चेञ्ज आफिस—यहाँबाट बेथरी, तौलिहवा, स्यूराज, परासी, शेरगंज, बुटौल, पाल्पा, रिढी, स्याङ्जा, पोखरा, बाग्लुङ र थाक सम्म जान्छ।

८ झूलाघाट—बैतडी एक्स्चेञ्ज आफिस—यहाँबाट दार्चुला, डँडे-ल्धुरा, डोटी, रिडाकोट. कर्नाली र जुम्लासम्म चिठी जान्छ।

नेपालमा चिठ्ठिमा टाँसने टिकट महाराजाधिराज त्रिभुवन वीरविक्रम-शाहका पालामा चन्द्रसम्सेर द्वारा प्रचलन गरेको थियो। त्यस टिकटमा हिमालय पर्वतमा विराजमान पशुपतिनाथको मुर्ति अंकित छ। पछि युद्ध सम्सेर द्वारा लिफाफा पनि चलाएको हो। त्यसमा पनि हिमालय पर्वतमा विराजमान पशुपतिनाथको मुर्तिको चित्रछ। हाल शालका टिकट र लिफाफामा नेपालका पुराना दर्शनीय ठाउँका थरि थरि का चित्र अंकित गरिएका छन्।

---

* विदेशबाट चिठ्ठीपत्र पठाउँदा खाममा सबभन्दा तल भारतवर्षका एक्स्चेञ्ज आफिसको नाम दिनु आवश्यक छ।

## मदेश तराई तर्फका जिल्ला, डाकखाना र स्टेशनहरुको नाम ।

| नेपाली जिल्ला | | रेलवे स्टेशन | डाकखाना | भारतकाजिल्ला |
|---|---|---|---|---|
| मोरङ्ग जिल्ला | झाँपा | गलगलिया | डिगल्बाङ्क ( Digalbank ) | पूर्णियाँ |
| | विराटनगर ( रँगेली ) | जोगबनी | कुवाँरी ( Koari ) | ऐ. |
| | | भपटियाई | कुनौली बजार ( Kunauli Bazar ) | भागलपुर |
| सप्तरी जिल्ला | हनुमाननगर | | | |
| | सिराहा | जयनगर | जयनगर ( Jainagar ) | दरभङ्गा |
| जलेश्वर ( महोत्तरी जिल्ला | | जनकपुर रोड | मधुवापुर ( Madhwapur ) | ऐ. |
| सर्लाही | | सितामढी | सोनवर्षा ( Sonbarsa ) | मुजफ्फरपुर |
| गौर ( रौतहट जिल्ला ) | | बैरगनियाँ | बैरगिनियाँ ( Bairginia ) | ऐ. |
| कलैया ( बारा जिल्ला ) | | आदापुर | आदापुर ( Adapur ) | चम्पारन |
| वीरगञ्ज ( पर्सा जिल्ला ) | | रक्सौल | रक्सौल (Raxaul ) | ऐ. |
| | | नौतनवाँ | नौतनवाँबजार ( Nautanwa Bazar ) | गोरखपुर |
| बुटौल जिल्ला | भैरहवा ( माँझखंड जिल्ला ) | | | |
| | पगासी ( पाल्हीं जिल्ला ) | शिशुवा बजार | ठुटी बारी ( Thuthibari ) | ऐ, |
| | भगवानपुर माझखण्ड ) | नौगढ़ | लोटन ( Lotun ) | बस्ती |
| | खजहनी जिल्ला | सोरथगढ़ | सोरथगढ़ (Shortgadh) | ऐ. |
| | स्यूराज ( शिवराज ) जिल्ला | बढनी | बढ़नी ( Badhani ) | ऐ. |

| नेपाली जिल्ला | रेलवे स्टेशन | डाकखाना | भारतका जिल्ला |
|---|---|---|---|
| बाँके जिल्ला | नेपालगञ्ज रोड | रुपैडीहा ( Rupaidiala ) | बहराईच |
| बर्दिया जिल्ला | कतर्नियाँ घाट | कतर्नियाँ घाट ( Katarnian-ghat ) | ऐ. |
| कञ्चनपुर जिल्ला | पुरनपुर | पुरनपुर ( Puranpur ) | पिलीभीत |
| त्रिनगर ( कैलाली जिल्ला ) | गौरी फाँटा | दुधवाघाट, पलिया कलान | खेरी |
| डुडुवा पहाड दाङ जिल्ला | जरुवा | तुलसीपुर ( Tulshipur ) | गोण्डा |
| इलाम जिल्ला | घुम | सुकिया पोखरी ( Sukiya Pokhari ) | दार्जीलिङ्ग |
| बैतडी जिल्ला — धार्चूला | | खेला ( Khela ) | अलमोडा |
| बैतडी जिल्ला — बैतडी | | झूलाघाट | ऐ. |

मामुली चिठ्ठी पत्र नेपाल भरिका हुलाकबाट पठाएर नेपाल र भारतवर्षका प्रत्येक स्थानमा जान सक्दछ। तर बिमा, रजीष्ट्रि चीठी पार्शल किंवा भि पि पार्शलहरू नेपाल राज्यमा कतै वहिं जादैन। भारतवर्षमा पठाउनु परे वा पठाइएका नेपालका हुलाक एक्सचेञ्जका भारतीय डाकखाना आएर पठाउनु पर्दछ पाउदछन्।

